

क्वयेर युथ ग्रुप

**Queer Youth Group**

दर्ता नं : २४४९३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरुद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

---

Ref. No. दर्ता नं : ०९०/६६/७८
Date मिति २०७७/०८/३०
PN पत्र १

नेसं ११४१ थिंला २७
२०७७ मंसिर ३०, १५ डिसेम्बर २०२०

## सार्वजनिक वक्तव्य

सन् २०१८ डिसेम्बर १७ (२०७५ पुष २ गते, नेसं ११३९ थिंलाथ्व नःमि) का दिन यसै क्वयेर युथ ग्रुपले नेपाली भाषामा 'ट्रान्सजेण्डर' शब्दको प्रयोगमा पहिलो वक्तव्य जारी गरेका थियौँ। सन् २०१६ देखि नै पारलैङ्गिक अधिकारकर्मी / अभियानता तथा व्यक्तिहरूले ल्याएको डिस्कोर्स र सन् २०१८ डिसेम्बर ५ मा शब्दहरूको राजनीति विषयक भएको छलफल पछी सन् २०१८ डिसेम्बर १७ मा जारी गरिएको घोषणा पत्रद्वारा अङ्ग्रेजी 'ट्रान्सजेण्डर' शब्दलाई नेपाली भाषामा 'पारलैङ्गिक' भनी प्रयोग गर्ने घोषणा गरेका थियौँ। यस अघि नेपाली भाषामा 'ट्रान्सजेण्डर' शब्दलाई सही न्याय हुने गरी शब्द प्रचलनमा आएको थिएन र व्यापक हिसाबले 'ट्रान्सजेण्डर' व्यक्तिहरूलाई 'तेस्रोलिङ्गी' भनिने गलत बुझाई समेत रहेको थियो । विश्वव्यापी प्रचलन अनुसार जन्मँदा इङ्गित गरिएको लैङ्गिकता भन्दा फरक लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई पारलैङ्गिक (ट्रान्सजेण्डर) व्यक्ति भनी परिभाषित गरिएको छ । यद्यपि पारलैङ्गिक पुरुषहरू 'पुरुष' हुन् र पारलैङ्गिक महिलाहरू 'महिला' हुन् । यसै सन् २०२० मार्च ३१ - पारलैङ्गिक दृश्यताको अन्तर्राष्ट्रिय दिवसको उपलक्षमा 'राष्ट्रिय पारलैङ्गिक मागपत्र'बाट पारलैङ्गिक महिला एवं पुरुषहरूलाई क्रमशः महिला पुरुष नै उल्लेख गरेको परिचयपत्र आवश्यक छ भन्ने कुरा स्पष्ट हुन्छ । महिला र पुरुष लैङ्गिक पहिचानका व्यक्तिहरूलाई महिला पुरुष बाहेक रहेको अर्थ्याउने शब्दावलीको प्रयोग उचित छैन । तसर्थ नेपाली भाषामा 'पारलैङ्गिक' शब्दावलीको परिचय नेपालकै पारलैङ्गिक अधिकारकर्मीहरूले गरेका हुन् र यस शब्दमा पारलैङ्गिक व्यक्तिहरूको अपनत्व पनि छ। सर्वप्रथम आफ्नो वकातलको क्षेत्रमा अधिकारकर्मी रुक्शना कपालीले यस शब्दलाई अघि बढाएको थियो भने क्रमशः पारलैङ्गिक महिलामा नूर केसी र पारलैङ्गिक पुरुषमा सगुन थापा र क्रमशः आयान थपलिया एवं रुपन्देहीका नाम गोप्य राख्न चाहने पारलैङ्गिक पुरुषहरूले आफ्नो कानुनी अधिकार दावी गर्ने क्रममा यसै शब्दको प्रयोग गर्दै अघि बढेका छन्। यस क्वयेर युथ ग्रुप लगायत नेपालमा कार्यरत विभिन्न नागरिक समाज लगायत आम सञ्चार एवं व्यक्तिहरूले क्रमशः यो शब्द अपनाउँदै गएका छन् । तैपनि नेपालमा अझै पारलैङ्गिक व्यक्तिहरूको पहिचानलाई तात्विक रूपले स्थापित गर्न उचित कानुन र कानुनी भाषामा अपनत्व हुन सकेको छैन। विशेष गरी आम सञ्चार माध्यमहरूमा अझै पनि पारलैङ्गिक व्यक्तिहरूलाई 'तेस्रोलिङ्गी' भनेर अपव्याख्या गर्नुका साथै पारलैङ्गिक व्यक्तिहरूले आफू महिला वा पुरुषमै पहिचान गर्ने कुरा स्पष्ट बताउँदा समेत जानीजानी नै 'तेस्रोलिङ्गी' शब्द भिराउने कार्य हुँदै आएको छ भने यस्तो लैङ्गिक दुस्बोधन (मिसजेण्डरिङ) सम्बन्धीका विषयहरूमा कुनै कानुनी निरुपणको व्यवस्था समेत नहुँदा पारलैङ्गिक व्यक्तिहरूलाई आम सञ्चार माध्यमहरूले उत्पीडन दिँदै आएको छ। अन्ततः हामी सबैमाझ नेपाली भाषामै 'ट्रान्सजेण्डर' व्यक्तिहरूलाई सम्बोधन गर्न मिल्ने उचित शब्द समुदाय स्वयंबाट परिचित भइ आइसकेको अवस्थामा यसलाई व्यापक प्रयोग प्रचलनमा ल्याउन आवहान गर्दै महिला र पुरुष अन्तगर्त पहिचान गर्ने पारलैङ्गिक व्यक्तिहरूलाई जबरजस्ती 'तेस्रोलिङ्गी' शब्द नभिराउन र त्यस्ता घटनालाई सम्बोधन हुने गरी उचित कानुनी प्रावधान ल्याउन आवहान गर्दछौँ।




दिपेश खनाल, अध्यक्ष

---


ईमेलः queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup